# राष्ट्र ऋण उठाउने अधिकारको व्यवस्था गर्न बनेको विधेयक

प्रस्तावना : आर्थिक वर्ष २०६८/०६९ को निमित्त नेपाल सरकारको अर्थ सम्बन्धी प्रस्तावहरुलाई कार्यान्वयन गर्न नेपाल सरकारले राष्ट्र ऋण उठाउन वाञ्छनीय भएकोले,

नेपालको अन्तरिम संविधान, २०६३ को धारा ८३ बमोजिमको व्यवस्थापिका-संसदको हैसियतमा संविधान सभाले यो ऐन बनाएको छ ।

१. संक्षिप्त नाम र प्रारम्भ : (१) यस ऐनको नाम "राष्ट्र ऋण उठाउने ऐन, २०६८" रहेको छ ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. राष्ट्र ऋण उठाउने अधिकार : (१) आर्थिक वर्ष २०६८/०६९ को निमित्त नेपाल सरकारको अर्थ सम्बन्धी प्रस्तावहरुलाई कार्यान्वयन गर्न नेपाल सरकारले आर्थिक वर्ष २०६८/०६९ को अन्त्यमा अधिविकर्ष बापत तिर्न बााकी रकम र अन्य तिर्न बााकी रकममा थप रु. ३७,४१,००,००,०००।- (अक्षरेपी सैंतीस अर्ब एकचालीस करोड) मा नबढ्ने गरी त्यतिसम्म रकमको राष्ट्र ऋण उठाउन सक्नेछ ।

तर यसरी उठाइने राष्ट्र ऋण रकममा नेपाल सरकारले प्रचलित कानून बमोजिम लिन पाउने अधिविकर्ष रकम समावेश हुने छैन ।

(२) नेपाल सरकारले आर्थिक वर्ष २०६८/०६९ सम्मको नेपाल राष्ट्र बैङ्कलाई तिर्न बााकी अधिविकर्षलाई नेपाल सरकारले ट्रेजरी बिलमा परिणत गर्न स्वीकृति दिन सक्नेछ ।

(३) यस दफा बमोजिम उठाइएको राष्ट्र ऋणको सावाा ब्याज भुक्तानी गर्ने अवधि र सो ऋणको ब्याजको दर राष्ट्र ऋण ऐन, २०५९ बमोजिम हुनेछ ।

प्रमाणीकरण मिति : २०६८/७/३